# विदेशी लगानी कर ऐन, २०१९

**प्रमाणीकरण र नेपाल राजपत्रमा**
**प्रकाशन मिति**

२०१९।९।२९

**संशोधन गर्ने ऐन**

| | | |
|---|---|---|
| १. | राजस्व न्यायाधिकरण ऐन, २०३१ | २०३१।४।१८ |
| २. | अर्थ सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०४७ | २०४७।८।२७ |
| ⇒३. | गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ | २०६६।१०।७ |



**२०१९ सालको ऐन नं. ३२**

**विदेशी लगानी कर निर्धारण गरी असूल उपर गर्ने व्यवस्थाको निमित्त बनेको ऐन**

**प्रस्तावना** : देश विकासको लागि राष्ट्रिय आयमा बृद्धि गर्न विदेशी लगानीमा कर लगाउन वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट नेपालको संविधानको धारा ९३ अनुसार यो ऐन बनाइबक्सेको छ ।

१. **संक्षिप्त नाम, विस्तार र प्रारम्भ** : (१) यो ऐनको नाम "विदेशी लगानी कर ऐन, २०१९" रहेको छ ।

(२) यो ऐन नेपालभर लागू हुनेछ र नेपालमा घर जग्गा भएको नेपाल बाहिर बसोबास गर्ने व्यक्ति उपर पनि लागू हुनेछ ।

(३) यो ऐन, २०१९ साल श्रावण ९ गते देखि प्रारम्भ भएको मानिनेछ ।

⇒ यो ऐन संवत् २०६५ साल जेठ १५ गतेदेखि लागू भएको, प्रशस्ती र अधिराज्य शब्द झिकिएको ।

२. **परिभाषा** : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा :-

(क) “विदेशी लगानी” भन्नाले नेपाली नागरिकले विदेशमा लगाइराखेको सरकारी सेक्यूरिटी, शेयर, बैंक एकाउण्ट, घर जग्गामा लगाइराखेको रकम तथा अरू सबै किसिमको नगदी लगानीलाई समेत जनाउँछ ।

तर, नेपाल मा निकासी पैठारी गर्ने सुविधाको लागि खोलेको चल्ती खाता (करेण्ट एकाउण्ट) लाई लिइने छैन ।

(ख) “विदेशी लगानी कर” भन्नाले खण्ड (क) बमोजिमको लगानीमा लागेको कर सम्झनु पर्छ ।

(ग) “कर अधिकृत” भन्नाले यो ऐनको प्रयोजनको निमित्त नेपाल सरकारले नियुक्त गरेको वा तोकेको कर अधिकृत सम्झनु पर्छ ।

(घ) “तोकिएको” वा “तोकिए बमोजिमको” भन्नाले यो ऐन अन्तर्गत बनेको नियममा तोकिएको वा तोकिए बमोजिमको सम्झनु पर्छ ।

३. **विदेशी लगानी कर निर्धारण र असूल उपर गर्ने** : साल बसाली वा कुनै एक सालको निमित्त विदेशी लगानी कर लगाउने गरी कुनै ऐनबाट व्यवस्था भएमा त्यस्तो विदेशी लगानी कर यो ऐन र यो ऐन अन्तर्गत बनेको नियमबमोजिम निर्धारण गरी असूल उपर गरिनेछ ।

४. **विवरण दाखिल गर्ने कर्तव्य** : (१) प्रत्येक सालको आश्विन मसान्तसम्ममा यो ऐन वा प्रचलित नेपाल कानुनबमोजिम विदेशी लगानी कर तिर्नु पर्ने कर्तव्य भएका व्यक्तिले आफू साधारणतः बसोबास गरेको इलाकाको कर अधिकृत छेउ आफ्नू विदेशी लगानीको विवरण तोकिएको ढाँचामा दाखिल गर्नु गराउनु पर्दछ ।

(क) साधारणतः नेपाल बाहिर बसोबास गरेका व्यक्तिले त्यस्तो विवरण काठमाडौंको कर अधिकृत छेउ दाखिल गर्नु गराउनु पर्दछ । कुनै करदाताले आफ्नो विदेशी लगानीको मूल्याङ्कन र कर निर्धारण नेपालभित्र आफू बसेको इलाकाको कर अधिकृतबाट गराउन चाहेमा सो कर अधिकृत छेउ विदेशी लगानीको विवरण पेश गरी कर निर्धारण गराउन पनि सक्नेछ ।

(ख) यो ऐनबमोजिम विदेशी लगानी कर तिर्नुपर्ने व्यक्ति नाबालक वा बौलाहा वा लाटालाटी भएमा निजको विदेशी लगानीको विवरण दाखिल गर्ने कर्तव्य निजको संरक्षकको हुनेछ ।

(२) उपदफा (१) अन्तर्गत दाखिल गर्नु गराउनु पर्ने विवरण कसैले दाखिल नगरे नगराएमा वा झुट्टा विवरण दाखिल गरे गराएमा त्यस्तो व्यक्तिलाई कर अधिकृतको आदेशले ने.रु.५०००।- पाँच हजारसम्म जरिवाना हुन सक्नेछ ।

(३) यो ऐन वा प्रचलित ऐनबमोजिम कर लाग्ने विदेशी लगानी भएको भनी कुनै व्यक्ति उपर शंका लागेमा कर अधिकृतले त्यस्तो व्यक्तिलाई आफ्नू विदेशी लगानीको विवरण दाखिल गर्नु गराउनु भनी लिखित आदेश दिन सक्नेछ । सो आदेश पाएको मितिले १५ दिनभित्र आफ्नो विदेशी लगानीको विवरण तोकिएको ढाँचामा कर अधिकृत कहाँ दाखिल गर्नु गराउनु पर्दछ ।

तर माथि उल्लेख भएको म्यादभित्र पनि विवरण दाखिल गर्न गराउन नसक्ने व्यक्तिले कारण जनाई सो कुराको लिखित सूचना सो आदेशले तोकेको म्यादभित्र कर अधिकृतलाई दिनुपर्छ र सो कारण निजलाई विश्वासप्रद लागेमा निजले बढीमा एक महीनासम्मको थप म्याद दिन सक्नेछ ।

(४) उपदफा (३) अन्तर्गत दिइएको आदेश पालन नगर्ने व्यक्तिलाई कर अधिकृतले ने.रु. ५००।- पाँचसयसम्म जरिवाना गर्न सक्नेछ ।

५. **<u>विदेशी लगानीको मूल्याङ्कन</u>** : विदेशी लगानीमा प्रचलित ऐनबमोजिम लाग्ने विदेशी लगानीको करको प्रयोजनको निमित्त त्यस्तो लगानीको मूल्याङ्कन कर अधिकृतले देहायको आधारमा गर्नेछ :-

(क) सेक्युरिटी, शेयर, बैंक एकाउण्ट र यस किसिमको नगदी जिन्सी लगानीको मोल आर्थिक वर्ष शुरु हुने दिनको बजार भाउबमोजिम गरिनेछ । बजार भाउ ननिक्लेकोमा अङ्कित मूल्यबमोजिम कायम गरिनेछ ।

[^]**(ख)** घर जग्गाको मोल तत् स्थानको किराया दर (रेन्टल भ्यालु) को आधारमा कायम गरिनेछ ।

६. **विदेशी लगानी करको निर्धारण** : (१) कर अधिकृतले विदेशी लगानीको विवरण दाखिल भएपछि यथाशक्य १ महीनाभित्र सो सालको लागि यो ऐनबमोजिम असूल उपर गर्नु पर्ने विदेशी लगानी करको रकम निर्धारण गर्नुपर्छ ।

तर, कुनै व्यक्तिको जति सुकै विदेशी लगानी भएपनि सबैको विवरण लिई बेग्ला बेग्लै मूल्याङ्कन गरी सबै विदेशी लगानीलाई यो ऐनको प्रयोजनको लागि एउटै ईकाई (यूनिट) मानी विदेशी लगानी कर निर्धारण गर्नुपर्छ ।

(२) प्रत्येक सालको निमित्त विदेशी लगानीमा लाग्ने विदेशी लगानी कर निर्धारण गर्दा कानुनी मान्यता प्राप्त हक अधिकार भई साल सालको श्रावण १ गतेका दिन जसको भोग चलनमा रहेको छ निजको नाममा विदेशी लगानीलाई कायम मानेर कर निर्धारण गर्नुपर्छ ।

(३) अवस्था अनुसार कर अधिकृतले त्यस्तो कर निर्धारण गर्दा करदाताद्वारा दाखिल भएका विवरण माथि उचित विचार गर्ने र त्यसको जाँचबुझको प्रयोजनको लागि सम्बन्धित व्यक्तिको नाममा समाव्हान जारी गर्ने, बयान बकपत्र गराउने र लिखतहरू दाखिल गराउने सम्बन्धमा प्रचलित नेपाल कानुन बमोजिम अदालतलाई भए सरहको सबै अधिकार निजलाई हुनेछ ।

तर यस दफा अन्तर्गत कारवाई हुँदा ७ दिनसम्मको लागि अर्जि खबर गरेमा वा गुज्रेको म्याद तारेख थाम्न ७ दिनभित्र कर अधिकृत छेउ आफैं वा वारिस हाजिर भै अर्जि गरेमा कर अधिकृतले अर्जिलाई स्वीकृति दिन वा म्याद तारेख थामी दिन सक्नेछ । सो भन्दा बढीको निमित्त अर्जि लाग्न वा गुजारेको म्याद तारेख थामिन सक्ने छैन ।

७. **विवरण दाखिल नगर्ने व्यक्तिको सम्बन्धमा विदेशी लगानीको मूल्यांकन र विदेशी लगानी करको निर्धारण** : दफा ४ को उपदफा (१) वा (३) बमोजिम विवरण दाखिल गर्नु पर्ने कर्तव्य भएको कुनै व्यक्तिले त्यस्तो विवरण दाखिल नगरे नगराएमा वा झुट्टा विवरण दाखिल गरे गराएमा वा अधूरो विवरण दाखिल गरे गराएमा दफा ५ र दफा ६

[^]: अर्थ सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०४७ द्वारा संशोधित ।

को अधीनमा रही सो व्यक्तिको विदेशी लगानीको मूल्याङ्कन र करको निर्धारण कर अधिकृतले यथाशक्य न्यायोचित अनुमानबाट गर्न सक्नेछ ।

८. **विदेशी लगानी करको भुक्तानी** : (१) दफा ६ वा ७ अन्तर्गत निर्धारित गरिएको विदेशी लगानी करको रकम कर निर्धारणको आदेश प्राप्त भएको ३५ दिनभित्र करदाताले सोही आदेशमा तोकिएको कर अड्डामा दाखिल गर्नु गराउनु पर्छ ।

(२) सो दाखिल नगरिएमा कर अधिकृतको सूचना अनुसार सो रकम स्थानीय माल अड्डाले वा नेपाल सरकारले तोकिदिएको अधिकारीले प्रचलित नेपाल कानुनको कार्य प्रणालीबमोजिम त्यस्ता करदाताको जायजाद गरी असूल उपर गरी लिन सक्नेछ ।

[*]९. **पुनरावेदन** : दफा ४, ५, ६ वा ७ अन्तर्गत कर अधिकृतले गरेको आदेश उपर राजस्व न्यायाधिकरणमा पुनरावेदन लाग्नेछ ।

१०. **विदेशी लगानी कर माफी दिने नेपाल सरकारको अधिकार** : कुनै व्यक्तिले विदेशमा लगाई राखेको लगानी कुनै सालको चैत्र महीनाभित्र नेपाल भित्र फिर्ता ल्याएमा त्यस्तो विदेशी लगानी उपर लागेको कर नेपाल सरकारले सो सालको निमित्त फिर्ता गर्न अथवा माफी गर्न पनि सक्नेछ ।

११. **साँचो सूचना दिनेलाई इनाम** : दफा ४ बमोजिम विवरण दाखिल गर्नु गराउनु पर्ने कर्तव्य भएका कुनै व्यक्तिले सो नगरे नगराए वा झुट्टा विवरण दाखिल गरे गराएको कुराको साँचो सूचना दिने व्यक्तिलाई सो कुरा ठहर भए पछि दोषि व्यक्तिबाट असूल उपर भएमा विदेशी लगानी करको अङ्कको सयकडा २० बीस नेपाल सरकारको आदेशले इनामको रूपमा दिनेछ ।

१२. **लागू नहुने** : शङ्का निवारणको लागि स्पष्ट गरिन्छ कि [✂]... ... ... नेपाल सरकारको अधिनस्थ विदेशी लगानी सम्बन्धमा यो ऐन र यस ऐन अन्तर्गत बनेको नियमको कुनै कुरा लागू हुने छैन ।

१३. **कर अधिकृतहरू** : (१) नेपाल सरकारले आवश्यक ठानेको संख्यामा यस ऐनको प्रयोजनको निमित्त कर अधिकृतहरू नियुक्त गर्न सक्नेछ ।

---

[*] राजस्व न्यायाधिकरण ऐन, २०३१ द्वारा संशोधित ।
[✂] गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

(२) कुनै कर अधिकृतको मातहतमा कति इलाका वा गाउँ मौजा राख्ने हो भन्ने कुरा नेपाल सरकारले नेपाल राजपत्रमा प्रकाशित सूचनाद्वारा तोक्न सक्नेछ ।

(३) कुनै कर अधिकृतले आफू मुनिका कुनै कर अधिकारीलाई आफ्नो अधिकार मध्ये केही वा जम्मै लिखित रूपमा सुम्पन सक्नेछ । यसरी सुम्पिएको अधिकारबमोजिम निजले गरेको काम कर अधिकृतले गरे सरह मान्य हुनेछ ।

(४) करदाताबाट यस ऐनको दफा ४, ६, ९ र ११ बमोजिम दाखिल भएका कागजपत्रहरू अति गोप्य सम्झिने छन् । सरकारी करसम्बन्धी कारवाईलाई सिवाय अरू कामलाई प्रकाश गरिने छैन र यस्तो कागजपत्र विदेशी लगानी करको प्रयोजनको निमित्त बाहेक अन्य कुरामा कुनै अदालतमा प्रमाण लाग्ने छैन ।

(५) नेपाल सरकारले यो ऐनबमोजिम आफूले पाएका सबै वा केही अधिकार नेपाल राजपत्रमा सूचना प्रकाशित गरी कर अधिकृतलाई सुम्पन सक्नेछ ।

**१४. <u>नियम बनाउने अधिकार</u>** : यो ऐनको उद्देश्य कार्यान्वित गर्न नेपाल सरकारले नियमहरू बनाउन सक्नेछ ।

**१५. <u>बाझिएमा गर्ने</u>** : यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमहरूमा लेखिएका कुरामा यहीबमोजिम र नलेखिएको कुरामा प्रचलित नेपाल कानुनबमोजिम हुनेछ ।′



′ <u>**द्रष्टव्य**</u> :

१. नेपाल कानुन (संशोधन) ऐन, २०२४ द्वारा रूपान्तर भएका शब्दहरू :-
(क) "अफीसर" को सट्टा "अधिकृत"
(ख) "समन" को सट्टा "समाह्वान"
(ग) "गजेट" को सट्टा "राजपत्र" ।

२. केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६३ बमोजिम रूपान्तर भएका शब्दहरू:-
"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार" ।